# चुम्लुङ बुलेटीन

सहयोग स्वरूप रु. ३/-

वर्ष–१/२०४७–१९९०–५०५१ येतहङ्बे   अंक–३   महीनाः कार्तिक–फाल्गुन / नोभेम्बर फेब्रुवरी

प्रकाशक:   रजिष्टर्ड नं. –[illegible]   सम्पादन:

पो. ब. नं. ४५४८

किरात याक्थुङ चुम्लुङ

काठमाण्डौं ।

अनुसन्धान तथा प्रकाशन उप-समिति,

किरात याक्थुङ चुम्लुङ




## सम्पादकीय

यो महिना देखि किरात येले सम्बत ५०५१ शुरु भएको छ। यस नव वर्षको शुभ उपलक्ष्यमा सम्पूर्ण हृदय तथा देशवासीहरूमा किरात याक्थुङ चुम्लुङ हार्दिक शुभकामनाका साथ आफ्ना शुभसन्देशहरू यसै ' चुम्लुङ बुलेटिन ' मार्फत प्रसारण गर्दछ ।

नेपाली धरतिले राजनितिक एवम व्यवस्था परिवर्तनका दिनहरू भोगेको करिब एक वर्ष हुन लागेको छ । परिवर्तनका क्रममा यसको देशको बन्दाबेज ' संविधान 'मा जाति, अन्य भाषा-लिपी र संस्कृतिलाई उपेक्षा गर्दै हेर्ने पानीमित्र बनाउनको लागि हालिएको माछा जस्तो बनाईएको छ । फेरि पनि ' हिन्दु , संवैधानिक राजतन्त्रात्मक , अधिराज्य ' भित्र , धार्मिक स्वतन्त्रता ' दिईएको छ । खस भाषालाई एक मात्र राष्ट्र भाषा र सरकारी कामकाजको भाषा बनाईएको छ । करोडौंको सम्पति खर्च गरेर विद्यालय र विश्वविद्यालय खोल्ने मानिसहरूलाई संस्कृत जबर्जस्ती पढाई रहेको देशमा लिम्बू भाषा लिपी लगायत अन्य मातृभाषाहरू पढ्न पठन पाठन गर्न ईच्छुकले नै सम्पति खर्च गरी प्राथमिक तह सम्म मात्रको सीमामा बाँधी व्यवस्था गर्न सक्ने प्रावधान राखी ती भाषाहरूको उपहास गरिएको छ । जातीय समानताको कुरालाई साम्प्रदायिक थिल्लामा परिणत गरिएको छ । यस बाट वर्तमान नव निर्मित संविधान प्रजातान्त्रिक छ त ? भन्ने प्रश्न चिन्ह खडा हुनु स्वभाविक छ । देशको वास्तविकतालाई नकारेर कुनै खास धर्म विशेषको एकाधिकार र मनमानि गर्न सक्ने बाँकी पाउने , खस जातिको भाषा मात्र नेपाली र एक मात्र राष्ट्र भाषा अनि त्यसबाहेक त्यो भाषा मात्र सरकारी कामकाजको भाषा बनाई सो भाषाको एकाधिकार तथा शासन दिन अब भन्ने बाँकी पाउने , जातीय समानताको कुरा उठाउनेलाई साम्प्रदायिक , विखण्डनवादी तथा राष्ट्रियतामाथि आँच पुऱ्याउने भन्ने संवैधानिक व्यवस्था प्रजातान्त्रिक हुन्छ भनिन्छ भने वर्तमान शासन -व्यवस्था तथा सरकार कति प्रजातान्त्रिक रहेछ र जनताले कस्तो प्रजातन्त्र पाएका रहेछन् यस कुरा बुझ्न अप्ठ्यारो हुने छैन ।

हामी गर्वका साथ के भन्न सक्छौं भने लिम्बू भाषा लिम्बूवानमा सरकारी कामकाजको भाषा हुने क्षमता राख्छ र तत्कालै प्राथमिक तहदेखि उच्च शिक्षा सम्मको पाठ्य पुस्तक पठन पाठनको क्षमता राख्छ । यसैले नव निर्मित संविधानमा खस भाषा मात्र सरकारी कामकाजको भाषा र एक मात्र राष्ट्र भाषा भईरहने, प्रत्येक समुदायले मातृभाषामा प्राथमिक तहसम्म मात्रको पठन पाठनको व्यवस्था आफ्नै श्रोतमा गर्न सक्ने अनि सो मन्दामाथिको पठन पाठनको लागि संविधानको सो धारालाई परिवर्तन गर्न संसदमा बहुमत पुऱ्याउनु पर्ने सीमामा बाँध्नुले संविधान निर्माताके चाहान्छन् भन्ने प्रष्ट भएको छ । यस बाट यो समस्या प्रति बढी चिन्तित हामी आफैले हुनु पर्ने र लिम्बू भाषा-लिपी , संस्कृति र जातीय विकास-

को कुरा हाम्रो आफ्नै समस्या र सो कुराको समाधान गर्ने हामी आफैं जिम्मेवार हुनुपर्ने बनाएको छ । यसैले हामी अहिले भए पनि, जुनसुकै प्रकारको राजनीति गरे पनि सत्तायामा केन्द्रीकृत भएर लामु लिम्बू भाषा-लिपी, संस्कृति तथा जातीय विकास प्रेमी प्रत्येक लिम्बूहरूको नैतिक दायीत्व भएको छ ।

देशको दस्तावेज ' संविधान, निर्माण पश्चात देश निर्माणमा भावि सरकारको छनौट गर्ने चुनावी मिति बैशाख २६, ०४८ लाई तोकिएको छ । प्रजातान्त्रिक भनिएको संविधानले एक झापट थाइसकेका जाति-जनजातिका भावना, समस्या एवम देशको समस्या र मागलाई निर्वाचन मैदानमा आउने राजनीतिक पार्टीहरूले आफ्नो कार्यक्रम तथा घोषणा-पत्रमा कसरी समेट्ने हुन् भन्नेमा जनताहरू जिज्ञासु हुनु स्वभाविक छ । देश र जनताले यो समस्याहरूको पूर्ण समाधानको कार्यक्रम चाहेका छन् । पूर्ण समाधान बिना समस्यालाई उठाउने र समस्या रहेको अंकुश मात्र रुनुले तत्काल चुनावमा मत पाउने स्वार्थको प्रयास साबित गर्नेछ ।

यस बहुदलीय राजनीतिको चुनावी घडीमा याक्थुङ चुम्लुङको सामाजिक चरित्रबारे प्रश्नहरू उठेको र अझ उठन सक्ने सम्भावना छ । यस्तो अवस्थामा यस संस्थाले आफ्नो स्वतन्त्र सामाजिक पहिचान जनसमक्ष राख्न सक्नु नितान्त आवश्यक छ । यति मात्र होईन यस संस्था उद्देश्य अनुरुप लिम्बू भाषा-लिपी तथा जातिय समस्याहरूलाई समाधानको बाटो खोल्न जन समक्ष ब्यापक प्रचार-प्रसार गरी भावी दिनको ढोका खोल्न प्रयत्न गरिनु प्रत्येक सदस्यहरूको कर्तब्य एवम् दायित्व भएको छ ।

---

**याक्थुङ चुम्लुङको सम्बन्धमा उठेका सवालहरूबारे केन्द्रीय कार्य समितिको वक्तव्यः**

भाषा लिपी र संस्कृति कुनै पनि जातिको जातीय अस्तित्व एवम् पहिचानको साथै देशको अमूल्य राष्ट्रिय सम्पत्ति हुन् । देशका यस्ता अमूल्य राष्ट्रिय सम्पतिको संरक्षण एवम् विकास गर्नु कुनै पनि संस्था, सरकार, समुदाय जाति एवम् नागरिकको कर्तब्य तथा दायित्व पनि हो । विगतका दिनमा यस्तो कर्तब्य र दायित्व हाम्रो देशको व्यवस्था एवम सरकारले वहन नगरेको मात्र नभई यस्तो कार्य कहीं कतैबाट भईहाले पनि त्यसलाई थिच्ने-मिच्ने र दबाउने कामहरू भएको कैयौं प्रमाणहरू हाम्रा अगाडि रहेका छन् । त्यस बखत यस्ता राष्ट्रिय विकासका क्रियाकलाप लाई दबाउने कानूनी प्रावधान थिए भने प्रजातन्त्र भएको भनिएको वर्तमान वातावरणमा पनि संविधानको टुप्पामा झुण्ड्याईएको खानेकुराको पोको जस्तो अन्य भाषा-लिपी र संस्कृतिको संरक्षण र विकासको कानूनी प्रावधान बनेको छ ।

विगत समयमा रहेको असजिलो र बन्दीत अवस्थामा जातीय असमानता, अन्य भाषा-लिपी तथा संस्कृतिमाथि भइरहेको सरकारी बेवास्ता र दमनलाई दृष्टि दिएर जातीय समान विकास, लिम्बू भाषा लिपी तथा संस्कृतिको प्रचार-प्रसार एवम् तीव्र विकासको महसुस गरी त्यस दिशा तर्फ पथसारिता लिन एक सामाजिक संस्थाको रुपमा २०४६ साल भाद्र महीनामा यस किरात याक्थुङ चुम्लुङ गठन भएको हो । लिम्बूवानका विभिन्न जिल्लालाई प्रतिनिधित्व गरी नेपाल उपत्यकामा रहेका लिम्बूहरूको प्रतिनिधित्वबाट २०४६ साल पौष २२ गते काठमाण्डौंमा भएको यस संस्थाको प्रथम सम्मेलनले तय गरेको दिशा, उद्देश्य तथा कार्यक्रमलाई लिएर वर्तमान अवस्थामा यो संस्था लिम्बूवानका विभिन्न जिल्ला तथा गाउँहरूमा कार्यरत छ । कुनै पनि सामाजिक संस्थाको निश्चित घोषित उद्देश्य भए जस्तै यस संस्थाको पनि घोषित उद्देश्य रहेको छ । उपरोक्त घोषित उद्देश्य पूर्ति कुनै खास राजनैतिक पार्टीबाट मात्र सम्भव छ र उक्त घोषित उद्देश्य पूर्ति गर्न कुनै एक पार्टीमा मात्र समावेश हुनु पर्छ भन्ने जस्ता गलत विचारलाई यस संस्थाले स्थान दिदैन । यो जस्ता कुनै खास पार्टी विशेषको राजनीति गर्ने अखडा नभइ एक सामाजिक संस्था भएको नाताले यस्ता विचारलाई स्थान नदिनु स्वभाविक आवश्यक र पनि छ ।

यस्तो विचार बोकेको यस सामाजिक संगठन किरात याक्थुङ चुम्लुङ देशका कुनै पनि राजनैतिक पार्टीसँग प्रत्यक्ष वा अप्रत्यक्ष रुपमा संलग्न छैन । यो कसैको पक्षमा वा कसैको विपक्षमा छैन । त्यसर्थ यस्तो पवित्र समाजिक सस्था लाई कुनै पनि राजनैतिक पार्टी, कार्यकर्ता र पत्र-पत्रिकाहरूबाट आफ्नो राजनीतिमा मुछ्ने प्रयास हुन्छ भने यस्तो कार्य, अभिब्यक्ति तथा गतिविधि किरात याक्थुङ चुम्लुङको घोषित उद्देश्यको विपरित भएकोले यो संस्था त्यसको कडा शब्दमा जोडदार विरोध गर्दछ । त्यसैले यस संस्थाको सीमा, उद्देश्य र मर्यादालाई ध्यानमा राखी यस्ता कुनैपनि कार्य अभिब्यक्ति तथा गतिविधिबाट सतर्क र सजग रहन केन्द्रीय कार्य समिति सम्पूर्ण सदस्यहरूमा हार्दिक अपिल गर्दछ ।

धन्यवाद !

केन्द्रीय कार्य समिति
किरात याक्थुङ चुम्लुङ
काठमाण्डौं ।

# या० चुम्लुङका क्रियाकलापहरु

लिम्बू जातिको उत्थान र भाषा, संस्कृतिको विकास गर्ने पवित्र उद्देश्यले स्थापित किरात या० चुम्लुङले आफ्नो स्थापनाको छोटो अवधिभित्र थुप्रै प्रशंसनीय कार्यहरू सम्पन्न गरिसकेको छ । किरात याक्थुङ चुम्लुङ याक्थुङ समुदायभित्र सम्पूर्ण लिम्बू जातिको साझा जातीय संगठनको रुपमा सम्मान र विश्वास प्राप्त गर्न पनि सफल भएको छ । स्थापनाकालमा तात्कालिन निरंकुश तानाशाही पञ्चायती व्यवस्थाको जातीय सामाजिक संगठन माथिको वक्र दृष्टिको कारणले लिम्बूवान क्षेत्रका सम्पूर्ण जिल्लाहरूको व्यापक प्रतिनिधित्व गरेर सम्मेलन गर्न नसकिएको मुलुकमा प्रजातन्त्र स्थापना भए पश्चात लिम्बूवान् क्षेत्रका धेरै जसो जिल्लाहरूमा जिल्ला तदर्थ समिति र यो समिति अन्तर्गतका अन्य उपसमितिहरू गठन गर्ने र जाति, भाषा-लिपी संस्कृति र सामाजिक उत्थान, विकास र सम्वर्द्धन गर्ने जस्ता क्रियाकलापहरू सञ्चालन गर्ने गराउने कार्यहरू हुँदै आएका छन् । किरात याक्थुङ चुम्लुङ केन्द्रीय समितिहरूले सञ्चालन गरेका संगठन विस्तार र अन्य प्रमुख क्रियाकलापहरू यहाँ संक्षिप्त जानकारीकोलागि प्रस्तुत गरिएको छ ।

## संगठन विस्तार ।

२०४७/५/१ /ईलाम,

इलाम जिल्लाको सबै गाउँ विकास समितिका लिम्बूहरूको प्रतिनिधिहरूको भेला इलाम बजारमा भएको थियो । उक्त भेलामा सहभागीहरूले आफ्नो जातिका उत्थान विकास भाषा-लिपी तथा संस्कृतिको संरक्षण र संवर्द्धन गर्नु पर्ने विषयमा व्यापक छलफल गरेका थिए । किरात याक्थुङ चुम्लुङ केन्द्रीय समितिका सदस्य रुम चेमजोङको सल्लाह र भेलाका सहभागीहरूको सम्मतिले चक्र बहादुर लिदेन्को संयोजकत्वमा १७ सदस्यीय किरात याक्थुङ चुम्लुङ इलाम जिल्ला तदर्थ समिति गठन गर्‍यो । उक्त समितिको सचिवमा धिरेन चेमजोङ छानिनु भएको थियो । तदर्थ समितिको तत्काल बसेको बैठकले जिल्लाका सम्पूर्ण गाउँ विकास समितिहरूमा गाउँ समितिहरू निर्माण गर्ने, जातीय उत्थान र भाषालिपी तथा संस्कृतिको विकास र संवर्द्धन गर्ने विविध कार्यक्रमहरू संचालन गर्ने र जनचेतना जगाउन आमसभाहरू गर्ने पनि निर्णय गर्‍यो ।

२०४७/६/१ फिदिम

पाँचथर जिल्लाको फिदिम बजारस्थित सामुदायिक भवनमा यही आश्विन १ गते लिम्बू जातिको उत्थान र विकास गर्ने पवित्र उद्देश्यले अति प्रेरित उत्साह र उमंगले भरपुर याक्थुङहरूको जिल्ला स्तरीय भेला भएको थियो । उक्त भेलामा किरात याक्थुङ चुम्लुङको उद्देश्य र सांगठनिक नीति बारे व्याख्या गर्दै चुम्लुङका केन्द्रीय सदस्य श्री रुम चेमजोङले भन्नुभयो "याक्थुङ चुम्लुङ लिम्बू जातिको सामाजिक संगठन हो र यसले नेपालका अन्य जातिहरूसँग भातृत्व सद्भावको आधारमा सुमधुर सम्बन्ध कायम गर्दै लिम्बू जातिको भाषा-लिपी, संस्कृति र अन्य सामाजिक पक्षहरूको विकास निमित्त कार्य गर्दछ ।" वहाँले थप्नुभयो " नेपालको एकीकरण पछि निरंकुश हिन्दू राजतन्त्रले यहाँका अन्य जनजाति र धर्म सम्प्रदायका जनताहरूलाई दमन शोषण र उत्पीडन गर्दै आएको छ । लिम्बूहरूको जाति धर्म, भाषा-लिपी, संस्कृति र सामाजिक आर्थिक क्षेत्रमा व्यापक शोषण-दमन भयो । फलस्वरूप आज हाम्रो जातीय पहिचान नै गुमाउने स्थितिमा पुगेका छौं । हिजोका निरंकुशताका पृष्ठपोषकहरूसँग सतर्क हुँदै, जातीय एकताको आधारमा भर्खर आएको प्रजातन्त्रलाई संरक्षण गर्यौं भने मात्र हाम्रो जातीय उत्थानको ढोका खुल्ला रहनेछ । " उक्त भेलामा अन्य सहभागीहरूले पनि आ-आफ्ना मन्तव्यहरू व्यक्त गर्नु भएको थियो । त्यस भेलाले व्यापक छलफल गरी श्री कर्ण बहादुर साम्बतीको अध्यक्षतामा २३ सदस्यीय किरात याक्थुङ चुम्लुङ पाँचथर जिल्ला तदर्थ समिति गठन गर्‍यो । उक्त समितिका उपाध्यक्ष, सचिव, सह-सचिव, र कोषाध्यक्षमा क्रमशः धन बहादुर फियाक, विजय सुब्बा, पमिला नेवाङ, र वीरेन्द्र कुमार नेवाङ छानिनु भएको थियो भने सदस्यहरूमा गंगा फेदाङ्गीन, राम चेम्जोङ, मान बहादुर थेबे, नन्द कुमार माङ्याक, तेजेन्द्र लवती, राम बहादुर लक्सी, टेक बीर आङदेम्बे, गंगा चेमजोङ, रोशनी नेवाङ, रविन्द्र लावती, वीरेन्द्र तुम्बापो, देवेन्द्र आङदेम्बे, भवानी लिङदेन, नरेन्द्र योङ्गयाङ, कमल लवेत्, गविर सेन लवेत्, पाहाङ बीर केरुङ र योगेन्द्र सम्बाहाम्फे छानिनु भएको थियो । तदर्थ समितिको तत्काल बसेको बैठकले जिल्लाका सबै गाउँ विकास समिति हरूको निर्माण गर्ने लगायतका महत्वपूर्ण निर्णयहरू लिएको थियो ।

---

**लिम्बूवानका सबै सरकारी विद्यालयहरूमा लिम्बू भाषा पठन पाठनको व्यवस्था गरिनु पर्छ ।**

**- याक्थुङ चुम्लुङ**

---

**आफ्नो मौलिक भाषा-लिपी, धर्म तथा संस्कृति गुमाउनु भनेको आफैं हराउनु हो ।**

**२०४७/६/४ ताप्लेजुङ्ग,**

ताप्लेजुङ्ग जिल्लाको सदरमुकाममा यही आश्विन ४ गते याक्थुङ्गहरूको जिल्लास्तरीय भेला भएको थियो। उक्त भेलाले किरात याक्थुङ्ग चुम्लुङ्ग ताप्लेजुङ्ग जिल्ला तदर्थ समिति गठन गरेको छ।

उक्त भेलामा किरात याक्थुङ्ग चुम्लुङ्गका केन्द्रीय सदस्य श्री रकम चेम्जोङ्गले जातीय समस्या बारे प्रकाश पार्दै "नेपाल छत्तिस जातको फूलबारी हो, तर यो फूलबारीमा निरंकुश तथाकथित मालीहरूको भेदभावपूर्ण नीतिले दुई,चार फूलहरू मात्र फुल्न पाएकाछन् यस कारण अबको प्रजातान्त्रिक वातावरणमा सबै जातिहरूको विकास हुन पाउनु पर्छ, यसै निमित्त आज हामी याक्थुङ्गहरू यहाँ भेला भएका छौं।" भन्दै "लिम्बूहरूको एक मात्र सामाजिक प्रतिनिधिमूलक संस्था किरात याक्थुङ चुम्लुङ्गको गठन गर्न गइरहेका छौं।" भन्नु भयो। उक्त चुम्लुङ्गमा विभिन्न वक्ताहरूले आफ्नो मन्तव्य व्यक्त गर्नु भएको थियो। सो भेलाले श्री तिल कुमार मेन्याङ्गबोको संयोजकत्वमा १५ सदस्यीय किरात याक्थुङ्ग चुम्लुङ्ग जिल्ला तदर्थ समिति, ताप्लेजुङ्गको गठन गऱ्यो। उक्त समितिका सदस्यहरूमा भवानी इधिङ्गो, रण बहादुर मावो, आ था धवम थेबे, लक्ष्मण मेन्याङ्बो, मान बहादुर एक्तेन, गणेश पोमु, लक्ष्मी याक्सो, भीम बहादुर लिम्बू, नर प्रसाद पक्ङ्बो, सच लाल तुम्बाहाङ्फे, पर्शुराम चोङ्वाङ्ग, चन्द्रमान वनेम र जितेन्द्र इवम रहनु भएको छ। उक्त तदर्थ समितिले जिल्लाका सबै गाउँ विकास समितिहरूमा तुरुन्त गाउँ समितिहरू पनि निर्माण गर्ने र भाषाका कक्षा लगायतका क्रियाकलापहरू सञ्चालन गर्ने निर्णय गरेको थियो।

**२०४७/७/२२/ धनकुटा,**

यही कार्तिक २२ गते धनकुटा जिल्लाका याक्थुङ्गहरूको बृहत भेला धनकुटा बजारमा सम्पन्न भएको थियो। श्री गंगाराम लिम्बूको सभापतित्वमा सञ्चालित उक्त सभामा विभिन्न वक्ताहरूले आफ्नो मन्तव्य प्रकट गर्नु भएको थियो। किरात याक्थुङ्ग चुम्लुङ्गका केन्द्रीय सदस्य श्री रकम चेम्जोङ्ग बाट उद्घाटित र श्री टेक रत्न चेमजोङ्गद्वारा उद्घोषण गरिएको उक्त सभामा बोल्दै किरात इतिहासविद तथा सह प्राध्यापक शिव कुमार श्रेष्ठले भन्नु भयो– "किरात मूलका मध्ये लिम्बूहरू पनि एक हुन्, यिनीहरू सामाजिक आर्थिक, राजनैतिक, शैक्षिक, सांस्कृतिक हरेक रुपले पछाडि परेका छन्। राज्यले यस्ता जनजातिहरूका निम्ति विशेष कार्यक्रम तर्जुमा गर्नु पर्छ।" नेपाली कांग्रेस जिल्ला अध्यक्ष श्री जनक सेनले "चुम्लुङ्गको उत्तरो उत्तर प्रगतिको कामना गर्दछु।" भन्नु भयो। त्यस्तै वामपन्थी राजनीतिज्ञ श्री आनन्द सन्तोषी राईले जोड दिंदै भन्नु भयो "जातीय उत्थानका कुरा गर्दा "साम्प्रदायिक" भन्नेहरू नै साम्प्रदायिक छन। हामीले हाम्रो जातीय उत्थानका कुराहरू हर हिसाबले उठाइरहनु पर्छ र त्यस निम्ति कार्यक्रमहरू सञ्चालन गरिनु पर्छ।" किरात या० चुम्लुङ्गका केन्द्रीय सदस्य श्री रकम चेम्जोङ्गले किरात याक्थुङ्ग चुम्लुङ्गको उद्देश्य र गठन गर्नु पर्ने कारणहरू बारे स्पष्ट पार्नु भएको थियो। श्री बल बहादुर सुब्बाद्वारा स्वागत गरिएको उक्त भेलाका मुनी बिना सुब्बाले सुमधुर स्वरले याक्थुङ्ग गीत गाउनु भएको थियो।

उक्त भेलाले श्री टेक रत्न चेम्जोङ्गको अध्यक्षतामा २९ सदस्यीय किरात याक्थुङ्ग चुम्लुङ्ग धनकुटा जिल्ला तदर्थ समिति गठन गऱ्यो। तदर्थ समितिका उपाध्यक्ष सचिव सह-सचिव, र कोषाध्यक्षमा क्रमशः लोक बहादुर तुम्बाहाङ्फे, हरि बहादुर लिम्बू, डम्बर सुब्बा र चन्द्र बहादुर चोङ्बाङ्ग छानिनु भएको थियो। त्यस्तै सदस्यहरूमा योगेन्द्र कुमार फागो, लोक बहादुर मादी, बल बहादुर सुब्बा, देवेन्द्र तुम्बा, कृष्ण प्रसाद लिम्बू, हेम कर्ण तुम्बा गंगाराम लिम्बू, हिमाल सिं लिम्बू, उमेर बहादुर लिम्बू, बाल नन्द लिम्बू, अमृत बहादुर लिम्बू, जय बहादुर लिम्बू, दिल बहादुर [illegible], देव इङ्नाहाङ्ग, भुवन सिं लिम्बु, हेमन सिं लिम्बू विष्णु कुमार लिम्बू, विष्णु मादेन' चित्त बहादुर ओक्नहाङ्ग, वीर बहादुर लिम्बू, कर्ण बहादुर लिम्बू, मान बहादुर लिम्बू, छत्र तुम्बा र बम बहादुर लिम्बू छानिनु भएको थियो। उक्त तदर्थ समितिको बैठकमा प्रत्येक गाउँ विकास समितिहरूमा गाउँ समितिहरू निर्माण गरी भाषा कक्षा संचालन गर्ने तथा इतिहासको खोज र संस्कृतिको संरक्षण गर्ने कार्य योजना तयार गऱ्यो।

**२०४७/८/८ ताप्लेजुङ्ग**

ताप्लेजुङ्ग किरात याक्थुङ्ग चुम्लुङ्ग जिल्ला तदर्थ समितिको आयोजनामा जिल्ला स्तरीय भेलाको प्रमुख अतिथि श्री सुर्य कन्दङ्वा हुनुहुन्थ्यो। कि० त० स० का संयोजक श्री तिल कुमार मेन्याङ्बोको सभापतित्व र लक्ष्मी याक्सोको उद्घोषणमा संचालित उक्त भेलामा विभिन्न वक्ताहरूले किरात याक्थुङ्ग चुम्लुङ्ग बारे स्पष्ट पार्नु भएको थियो।

सोही अवसरमा किरात याक्थुङ्ग चुम्लुङ्ग जिल्ला तदर्थ समिति ताप्लेजुङ्गको कार्यालय उद्घाटन प्रमुख अतिथि श्री सुर्य कन्दङ्वाले गर्नु भएको थियो।

उक्त भेलाले ३ वटा महत्वपूर्ण प्रस्तावहरू पनि पारित गरेको थियो जो निम्न प्रकार छः (१) जातीय भाषा र लिपीको विकासको लागि विद्यालयहरूमा ऐच्छिक विषयका रुपमा जातीय भाषाहरूको पढाई हुनु पर्छ। (२) लिम्बू भाषा र लिपीको अध्ययन कक्षा जिल्लामा सञ्चालन गर्ने र (३) जिल्लामा याक्थुङ्ग (लिम्बू) भाषाको भाषा पाठशाला स्थापना गरिनु पर्छ।

कार्यक्रमको बीच बीचमा लिम्बू भाषामा सुमधुर गीतहरू कलाकारहरूले गाएका थिए।

**तेह्रथुम :–**

तेह्रथुम जिल्लाको विभिन्न क्षेत्रमा किरात याक्थुङ चुम्लुङका क्षेत्रिय इकाई समितिहरू गठन भएका छन् । मयङलुङ बस्तिपरिको १ नम्बर क्षेत्रको क्षेत्रिय इकाई समितिको अध्यक्ष, उपाध्यक्ष, सचिव र कोषाध्यक्षमा क्रमश: श्री लोक बहादुर तुम्बाहाँफे, घनश्याम सावदेन इन्द्र बहादुर तुम्बाहाँफे र लोक बहादुर फुदोङ रहनु भएको छ । सदस्यहरूमा क्रमश: राम बहादुर तुम्बाहाँफे, सुरेन्द्र बहादुर तुम्बाहाँफे, राजेन्द्र बहादुर तुम्बाहाँफे, फत्ते बहादुर तुम्बाहाँफे, नरेन्द्र पयाँगु, पदम पयाँगु, अमृत पयाँगु प्रेम बहादुर तुम्बाहाँफे, लक्ष्मण सावदेन, भीम प्रसाद पयाँगु, शैलेन्द्र खापुङ, चक्र बहादुर लिगक्, कान्ति दास फुदोङ, देवि बहादुर फुदोङ ; वर्त बहादुर लिम्बू शेर बहादुर तुम्बाहाँफे, गणेशमान सुबोहाङ, पुर्ण सुबोहाङ, भक्त सुबोहाङ र नन्द सम्बाहाँफे रहनु भएको छ ।

यस्तै गरि मराहङ, श्रीजङ, पौठाक क्षेत्रमा पनि श्री प्रभु नारायण खापुङको सभापतित्वमा एक गठन सभाको आयोजना भएको थियो । सो सभाबाट इकाका समिति गठन गरियो । समितिको अध्यक्ष, उपाध्यक्ष, सचिव, सह-सचिव र कोषाध्यक्षमा क्रमश: नारायण प्रसाद लिम्बू, ललित बहादुर लिम्बू, नेत्र प्रसाद लिम्बू, धनमान लिम्बू र शेर बहादुर लिम्बू हुनहुन्छ । त्यस्तै सदस्यहरूमा रत्न बहादुर लिम्बू, बाबुराम लिम्बू, पूर्ण बहादुर, विजय कुमार खापुङ, शिव कुमार पेहिम, विष्णु कुमार खापुङ, बम बहादुर पंथाक, अमृत बहादुर पंथाक, भूमिराज पंथाक र चक्र बहादुर लिम्बू हुनु हुन्छ ।

**झापामा 'याक्थूङ्ङ चुम्लुङ्ङ' गठन**

२०४७ माघ २१ गते

झापा जिल्ला विभिन्न क्षेत्रका याक्थुङ्हरूको माघ २१ गते झापा बिर्तामोडमा भएको मेलाबाट एक २५ सदस्यीय किरात याक्थुङ्ङ चुम्लुङ्ङ झापा जिल्ला तदर्थ समिति गठन भएको छ । सामाजिक संस्था याक्थुङ्ङ चुम्लुङ्ङको उद्देश्य, कार्य प्रक्रिया एवं गतिविधि सम्बन्धमा व्यापक छलफल पश्चात गठित सो तदर्थ समितिमा संयोजक सदस्य सचिव, आर्थिक सचिवमा क्रमश: श्री टेक बहादुर यङ्हाङ, भानुहाङ फाम्गो, श्रीप्रसाद यङ्हाङ र सदस्यहरूमा तिल बिक्रम कन्दङ्वा, के०बि० काम्बाङ अशोक सुब्बा, तेजेन्द्र साम्देन, पूर्ण बहादुर कुरुम्बाङ, टिकम छत्र सावाँताम्मादेन, लोकेन्द्र ईङ्नाम्, लाल बहादुर योखिम्, सुश्री शुभद्रा मादेन, दिलशरी खजुम्, शिव कुमार यङ्या, राजेन्द्र लिङ्देन, मान बहादुर सौसा, राजेन्द्र ईङ्नाम, राज कुमार फागो, बासुहाङ् सुब्बा, बिजुली बिक्रम नेम्बाङ्, चन्द्र सुब्बा, लाहान सिं तुम्बापो, अग्नि कुमार शेर्पा र योगेश सुब्बा रहेका छन् । उपस्थित भेलाले याक्थुङ्ङ चुम्लुङलाई राजनीतिकरण गर्न गरिएको प्रयास प्रति सचेत रहनु पर्ने र सामाजिक संस्थाको मर्यादा राखी प्रत्येक सदस्यहरूले यसका गतिविधिहरूलाई सञ्चालन गर्नु पर्नेमा पनि जोड दिएको थियो । सो गठन केन्द्रीय समितिका उपाध्यक्ष श्री नन्द कन्दङ्वाको उपस्थितिमा भएको थियो ।

यस्तै गरि झापा जिल्लाको खुदुनाबारी क्षेत्रमा याक्थुङ्ङ चुम्लुङ्ङको ईकाई गठन भएको छ । सो ईकाईका सभापति, उप-सभापति, सचिव, सह-सचिव, कोषाध्यक्षमा क्रमश: श्री बाजकर्ण मांगेहाङ्, भक्त बहादुर लिम्बू, दिल बहादुर एक्तेन, धर्मलाल लिङदेन र सदस्यहरूमा क्रमश: छत्र कुमारी सुब्बा, मैन बहादुर मोख्राबु, कुल बहादुर चेम्जोङ, नर प्रसाद कन्दङ्वा काली बहादुर कन्दङ्वा, राम प्रसाद फ्याक, हरि प्रसाद कन्दङ्वा, नर प्रसाद सावा पदम बहादुर फागो, चक्र इङ्नाम्, लक्ष्मी ईङ्नाम् सुश्री दिल कुमारी लावती, भरत लिङ्देन् र शुक्र छत्र थोनीहाङ् रहनु भएको छ ।

**काठमाडौ**

यहि गत माघ २८ गतेदेखि यही फागुन ५ गते सम्म किरात नव वर्ष शुरु भएकोमा किरात याक्थुङ चुम्लुङ, केन्द्रीय कार्य समितिले काठमाडौ तथा ललितपुरका सडकहरूमा 'नव वर्षको शुभकामना' ब्यानरहरू र पोष्टरहरू टाँग्ने काम गर्‍यो । यस्तै गरी विभिन्न पत्र-पत्रिका मार्फत शुभकामनाका सन्देशहरू प्रसारण गर्‍यो । यसै नव वर्षको उपलक्षमा अन्य कार्यक्रमहरू पनि गर्ने भएको छ ।

**धरान,**

किरात याक्थुङ चुम्लुङ् सुनसरी जिल्ला तदर्थ समितिको आयोजनामा धरान नगरका विभिन्न सडकहरूमा 'नव वर्षको शुभकामना' का ब्यानर-तुलहरू व्यापक रूपमा टाँगी विभिन्न सभा-समारोहको कार्यक्रम गरी भव्यताका साथ मनाईएको छ ।

## सूचना:–

चुम्लुङ्ङ पात्रो, चुम्लुङ्ङ बुलेटिन र सदस्यता-पत्रको रकम हालसम्म नबुझाएका कतिपय सदस्यहरूले नबुझाएको हुँदा चुम्लुङ्ङ अफिसमा आई बुझाउन सुचित गरिन्छ । चैत्र १५ गते सम्ममा नबुझाए यसै बुलेटिन मार्फत नाम प्रकाशमा ल्याइने व्यहोरा समेत जानकारी गराइन्छ ।

केन्द्रीय कार्य समिति,
किरात याक्थुङ्ङ चुम्लुङ्ङ ।

## अनुरोध:–

स्वदेश तथा विदेशमा रहेका विभिन्न सम्प्रदाय तथा जनजातिका गतिविधिका समाचार, लेख, रचनाहरू दिएर चुम्लुङ्ङ बुलेटिनलाई सहयोग गर्न हार्दिक अनुरोध गरिन्छ ।

ठेगाना:–
किरात याक्थुङ्ङ चुम्लुङ
पो. ब. नं.:– ४५४८
काठमाण्डौं, नेपाल

# समाचार

## स्व० इमान सिं चेम्जोङ्को ८७औं जन्म जयन्ती भव्य रुपमा सम्पन्न ।

०४/६/१७

कि० या० चुम्लुङको केन्द्रीय कार्यसमितिको आयोजनामा डिल्लीबजार सांस्कृतिक केन्द्रको हलमा किरातोलोजिष्ट स्व० ईमानसिंह चेम्जोङ्को ८७औं जन्म जयन्ती सुसम्पन्न भयो । केन्द्रीय उपाध्यक्षको सभापतित्वमा भएको सो सभाका प्रमुख अतिथी नेपाल राजकीय प्रज्ञा प्रतिष्ठानका उपकुलपति डा० ईश्वर बराल र स्व० चेम्जोङ्ज्यूका धर्मपत्नि हुनुहुन्थ्यो । सह-सचिव बालकृष्ण माबुहाङ्को उद्घोषणबाट शुरु भएको सो सभामा विभिन्न वक्ताहरुले स्व० चेम्जोङ्ग प्रति श्रद्धाञ्जली अर्पण गर्नुका साथै आ-आफ्नो मन्तव्य व्यक्त गर्नु भएको थियो । वक्ताका रुपमा ने० रा० प्र० प्र०का सदस्य कवि बैरागी काईला (तिल विक्रम नेम्वाङ) ले स्व० चेम्जोङका कृतिहरुका विषयमा चर्चा तथा अनुसन्धान गरेर उहाँले हाम्रो भाषाप्रति गर्नुभएको सेवालाई हामीले कृतज्ञता ज्ञापन गर्नु सबैभन्दा ठूलो श्रद्धाञ्जली हुनेछ साथै स्व० चेम्जोङ्ग्यूको अनुसन्धान भन्दा अघि किराती भाषा तथा लिपी विदेशीहरुको पेवा जस्तै थियो, सबैको परिचय आज बेरागरको पुस्तका तथा किराती बेद राखिएको चर्चा गर्नु भयो । त्यसकारण यस कुरालाई हृदयङ्गम गरी स्व० चेम्जोङ्ग्यूले आफ्नो सम्पूर्ण जीवन भाषा, लिपी, साहित्य तथा जातिको पुनर्निर्माण तथा पुनरुत्थानमा बिताउनु भयो, यसकालागि आजका पिढीले श्रद्धा राख्नैपर्छ तर उहाँका कृतिहरुको खोज अनुसन्धान तथा प्रकाशन गर्ने क्रम छ, त्यो अपर्याप्त भएको छ भन्नुहुँदै आज सिक्किमका कलेज तथा स्कूलहरुमा यो भाषा तथा लिपी दोश्रो भाषाको रुपमा प्रतिस्थापन भइ सकेकोले यसको प्रयोगमा एक रुपता तथा स्थिरता हुनु पर्ने सुझाव पनि दिनु भयो । नेपाल जनजाति महासंघका प्रतिनिधि मेजर सन्तोष राईले 'नेपालको राष्ट्रिय एकतामा जनजातिको भूमिका' विषयमा बोल्नु भएको थियो । बोल्ने क्रममा उहाँले नेपाल एकीकरणको क्रममा किरातीहरुको भाषा, लिपी, साहित्य, रितिरिवाज तथा परम्परा लोप भएको हो भन्नु हुँदै सो लोप भएको भाषा तथा लिपी प्रति स्व० चेम्जोङ्ग्यूले गर्नु भएको योगदान आफ्नो अस्तित्व तथा पहिचान निर्माणको बाटो हो भन्ने चर्चा गर्नु भयो । ने० रा० प्र० प्र०का उपकुलपति डा० ईश्वर बरालज्यूले स्व० चेम्जोङ्ग्यूमा श्रद्धाञ्जली अर्पण गर्नुका साथै स्व० चेम्जोङ किरातीहरुका मात्र श्रद्धाका पात्र नभइ वहाँ सिंगो राष्ट्रको श्रद्धा गरिनु पर्ने व्यक्तित्व हुनु हुन्छ भन्नु भयो । किनकी उहाँले नेपालका जातिमध्यका किराती लिपी तथा भाषा संस्कृतिको खोज अध्ययन तथा अनुसन्धान गरेर राष्ट्रलाई दिनु भएको योगदान हो, भन्दै, जुनसुकै जातिको संस्कृति भए पनि त्यो सिंगो राष्ट्रको सम्पत्ति हो भन्ने कुरामा जोड दिनु हुँदै त्यो सम्पत्ति मासिनु भनेको राष्ट्रको सम्पत्ति मासिनु हो भन्नु भयो । अर्का वक्ता लामो समयदेखि किरात भाषाको सेवा गरिरहनु भएका आशमान सुब्बा हुनु हुन्थ्यो । वहाँले स्व० चेम्जोङ्सँग रहँदाका स्मरणहरु सुनाउनु हुँदै भाषाको सेवामा स्व० चेम्जोङको भूमिका अग्रणी भएको उल्लेख गर्नु भयो । त्यसको फलस्वरुप आज किरात भाषा तथा लिपीले मौलाउने अवसर पाईरहेको छ भन्नु भयो । अर्का वक्ता किरात राई यायोक्खाका अध्यक्ष गजाराज राईले स्व० चेम्जोङले आफ्नो सम्पूर्ण जीवन भाषा साहित्यको उत्थान गरेर धार्मिक पक्षमा पनि एउटा दिशा दिएर जानु भयो यस योगदानकालागि हामीले वहाँप्रति श्रद्धा व्यक्त गर्नु हाम्रो परम कर्तव्य हुनेछ भन्नु भयो । अतः हामीले वहाँ जस्तो भाषा विद् तथा मार्ग निर्देशकको जन्म जयन्ती मनाउने निरन्तरता कायम राख्नुपर्ने कुरामा जोड दिनु भयो ।

कार्यक्रमको थालनी स्व० चेम्जोङको तस्वीरमा माल्यार्पण गर्ने क्रमबाट शुरु भएको थियो । सो माल्यार्पण गर्नेहरुमा वक्ताहरुका साथै स्व० चेम्जोङका धर्मपत्नी र परिवारका सदस्यहरु हुनु हुन्थ्यो । कार्यक्रमको बीचमा भगत सुब्बा तथा दुर्गा सुब्बाको स्वरमा सङ्गीत बद्ध गरिएका लिम्बू गीतहरु पनि सुनाइएका थिए ।

२०४७/१०/१६ काठमाडौं

किरात याक्थुङ चुम्लुङ दोश्रो वर्षमा प्रवेश गर्दैछ । अवधिको दृष्टिले एउटा संगठनको निम्ति यो कुनै धेरै समय होईन । तर यस छोटो अवधिमा पनि चुम्लुङले निकै उपलब्धिहरु हासिल गरेको छ । संगठन विस्तारको क्रममा लिम्बूवान क्षेत्रका प्रायः जसो जिल्लाहरुमा जिल्ला तदर्थ समितिहरु गठन भइसकेका छन् । जिल्ला तदर्थ समितिको मातहतमा गाउँ गाउँमा गाउँ समितिहरु गठन भइरहेका छन् । यस बाहेक सांस्कृतिक, सामाजिक, अनुसन्धान तथा प्रकाशन र अन्य विविध

... को मो० न० नं० परिवर्तन गरीएको छ ।

क्षेत्रमा चुम्लुङले यथेष्ट कामहरू गरिसकेको छ। यीनै क्रियाकलापहरूको समिक्षा गर्न र संगठनको केन्द्रीय नेतृत्वलाई पुनर्गठन गर्न यही माघ ६ गते चुम्लुङको केन्द्रीय परिषदको पाँचौं बैठक बसेको थियो। उक्त बैठकमा तत्कालिन केन्द्रीय समितिले आफ्नो कार्यअवधिमा गरेका कार्यहरूको विस्तृत प्रतिवेदन केन्द्रीय समितिका सचिव श्री उत्तम थाङ्देनले प्रस्तुत गर्नु भएको थियो। किरात याक्थुङ चुम्लुङले बर्षभरि संचालन गरेका सांस्कृतिक, सामाजिक, अध्ययन-अनुसन्धान तथा प्रकाशन, प्रचार-प्रसार र आर्थिक क्षेत्रका संपूर्ण क्रियाकलापहरूको विस्तृतरूपमा प्रतिवेदनले प्रकाश पारेको थियो। प्रतिवेदन उपर उपस्थित सबै सदस्यहरूले व्यापक छलफल गरी केही परिमार्जन सहित सर्वसम्मतीले पारित गरेका थिए। किरात याक्थुङ चुम्लुङको केन्द्रीय समितिको कार्यावधि समाप्त भएको हुनाले चुम्लुङको विधानको परिच्छेद २ को धारा ८ को उपधारा २ बमोजिम परिषद् सदस्यहरूले व्यापक छलफल गरी परिषदका सदस्यहरू मध्येबाट एक १५ सदस्यीय चुम्लुङ केन्द्रीय कार्यसमितिको गठन उक्त बैठकमा गरिएको थियो। नव निर्वाचित केन्द्रीय कार्यसमितिका पदाधिकारी तथा सदस्यहरू निम्नानुसार चुनिनु भएको छ। अध्यक्ष, उपाध्यक्ष, सचिव, सह सचिव र कोषाध्यक्षमा क्रमशः डि० डि० चेमजोङ, नन्द कन्दङ्वा, उत्तम थाङ्देन, बाल कृष्ण माबोहाङ र शारदा सुब्बा हुनुहुन्छ। त्यस्तै सदस्यहरूमा टीका लिम्बू, बिक्रम सुब्बा, दीपक थेबे, रकम चेमजोङ, अर्जुन सुब्बा, सत माया सुब्बा, सोम राज सम्बाहाम्फे, तेज बहादुर याक्सो, नर प्रसाद लिम्बू, छवि सुब्बा, चुनिनु भएको छ। नव निर्वाचित केन्द्रीय समितिलाई सल्लाहकार तिल बिक्रम नेम्वाङ र पार्षद सदस्य सुवास नेम्वाङले छोटो मन्तव्य सहित बधाई ज्ञापन गर्नु भएको थियो।

## किरात याक्थुङ चुम्लुङका उप समितिहरू

किरात याक्थुङ चुम्लुङको उद्देश्य अनुरूप कार्यक्रमहरू तर्जुमा गरी नियमित र व्यवस्थितरूपले कार्यान्वयन गर्न केन्द्रिय समितिको मातहतमा केन्द्रिय उपसमितिहरू गठन गरिएका उपसमितिहरूमा आर्थिक, सामाजिक सेवा, अध्ययन-अनुसन्धान तथा प्रकाशन, सांस्कृतिक र प्रचार-प्रसार छन्। प्रत्येक उप समितिहरूले आफ्नो कार्य क्षेत्र भित्र रही वार्षिक कार्यक्रमहरू तर्जुमा गर्ने योजनाहरू तयार गरी कार्यान्वयन गर्ने जस्ता जिम्मेवारीहरू दिइएका छन्। आफ्नो-आफ्नो कार्य क्षेत्रमा प्रत्येक उप समितिहरूले नियमितरूपमा सक्रियतापूर्वक कार्य गर्दै आइरहेका छन्। लिम्बू जातिको सांस्कृतिक पहिचान दर्शाउने " मुन्धुम स्वांगिम साँभ " चुम्लुङ पाक्सो, देउसी, चुम्लुङ बुलेटिन, सामाजिक सेवा र लिम्बू जातिको विविध पक्षहरूको प्रचार-प्रसार जस्ता कार्यहरू यीनै उप समितिहरूको सक्रियता र केन्द्रीय समितिको सहि निर्देशनमा सम्पन्न भएका हुन्। प्रत्येक उप समितिहरूमा एक संयोजक र आवश्यकता अनुसार सदस्यहरू समावेश गरिएका छन्। किरात याक्थुङ चुम्लुङ केन्द्रिय उप समितिहरूको गठन निम्नानुसार छन्।

### १. अध्ययन-अनुसन्धान तथा प्रकाशन उप समिति

क) संयोजक–रकम चेमजोङ
ख) सदस्य–बिक्रम सुब्बा (ग) सदस्य–रवि लक्सम
घ) ,, –लक्ष्मी सुब्बा (ङ) ,, –सुमन सुब्बा
च) ,, –शारदा सुब्बा (छ) ,, –हरिमान ,,
ज) ,, –नविन सुब्बा (झ) ,, –लोकबन्धु ,,

### २. प्रचार–प्रसार उप समिति

क) संयोजक–नन्द कन्दङ्वा
ख) सदस्य–दीपक थेबे (ग) सदस्य- तेज याक्सो
घ) ,, –अर्जुन सुब्बा (ङ) ,, –हर्क सुब्बा
च) ,, –सत माया सुब्बा

### ३. सांस्कृतिक उप समिति

क) संयोजक–दिनेश सुब्बा
ख) सदस्य–नर प्र. लिम्बू (ग) सदस्य–सुश्री पवित्र सुब्बा
घ) ,, –पद्म मेन्याङबो (ङ) ,, –सरोज सुब्बा
च) ,, –सम फङ्गाम्बु (छ) ,, –कुल प्र. मेन्याङबो
ज) ,, –प्रकाश सुब्बा (झ) ,, –हेम कुमार लावती
ञ) ,, –भगत सुब्बा (ट) ,, –गीता लिम्बू
ठ) ,, –कुल ब. लिम्बू (ड) ,, –बाल कृष्ण सुब्बा

### ४. सामाजिक सेवा उप समिति

क) संयोजक–उत्तम थाङ्देन
ख) सदस्य–विजय राज थेबे (ग) सदस्य–दुर्गा सुब्बा
घ) ,, –तिल बिक्रम लिम्बू (ङ) ,, धीरेन्द्र सुब्बा
च) ,, –मोहन कुमार ,, (छ) ,, –त्रि. बि. ,,
ज) ,, –हीम कुमारी ,, (झ) ,, –डम्बर तेम्बे
ञ) ,, –सुश्री जसमाया ,, (ट) ,, –कृष्ण सुब्बा
ठ) ,, –श्याम लावती (ड) ,, –छवि सुब्बा

### ५. आर्थिक उप समिति

क) संयोजक–बसन्त कुरुम्बाङ
ख) सदस्य–टीका लिम्बू
ग) ,, –विष्णु कुमारी लिम्बू
घ) ,, –भानु खेवाङ

## समवेदना

किरात ईतिहासका ज्ञाता तथा राजनीतिज्ञ श्री नारदमणी थुलुङको ८२ बर्षको उमेरमा भएको असामयिक निधनले किरात साहित्यमा अपूरणीय क्षती भएको महसुस गर्दछौं! वहाँको आत्माको चीर शान्ति प्राप्तिको निम्ति भगवानसँग प्रार्थना गर्दै शोक सन्तप्त परिवार प्रति हार्दिक समवेदना व्यक्त गर्दछौं!

किरात याक्थुङ चुम्लुङ

# बिविध समाचारः—

धारणा (*Concept of consciousness*), सहअस्तित्वको धारणा (*Concept of co-existence*), बाट काम गरी एकाधिकार या दमनको धारणा (*Concept of domination*) लाई त्याग्ने विचारबाट काम गरे मात्र मुद्दा टुंगोमा पुग्ने विश्वास व्यक्त गर्नु भयो। यस विचार गोष्ठीमा ८ जातीय संगठनहरूले कार्य-पत्र प्रस्तुत गरेका थिए। किरात याक्थुङ चुम्लुङको तर्फबाट केन्द्रीय कार्य समितिका उपाध्यक्ष नन्द कान्दङ्वाले कार्य-पत्र प्रस्तुत गर्नु भएको थियो। प्रस्तुत कार्य-पत्रहरूमाथि ३ विद्वान टिप्पणीकारहरूले टिप्पणी गर्नु भएको थियो। सो गोष्ठीमा धेरैजसो वक्ताहरूले संविधानमा भएको धर्म भाषा-लिपी तथा जातीय विकासको व्यवस्थाको विरोध गरेका थिए भने प्रधानमन्त्री कृष्ण प्रसाद भट्टराईले पूर्वाञ्चलका बिराटनगर र धरानमा भएको सभामा "कुनैपनि जाति पिछडिको छैन, सबै जाति पिछडिएका छन्" भनि जनजातिको समस्यालाई ईन्कार गरेकोमा रोष प्रकट गरेका थिए।

### किरात यात्रु यक्चुम्बा 'किरात पान्नु सक्‍वक वाचा फोमा लक्चुम्बा यक्चुम' संस्था सक्रिय :–

झापा जिल्लाको तोपगाछी, केर्खा गाउँमा 'किरात पान्नु सक्‍वक वाचा फोमा लक्चुम्बा यक्चुम' नामक संस्थाले २०४७ साल जेष्ठ महीनादेखि नै किरात भाषा-लिपीको अध्यापन गराउँदै आएको छ। सो संस्थाका अध्यक्ष श्री खड्ग प्रसाद मेन्याङ्बो हुनु हुन्छ भने सचिवमा श्री से से हाङ्ग फुराक हुनुहुन्छ। २४ जना सदस्यहरू रहनु भएको सो संस्थाको भाद्र महीनामा भएको बैठकले किरात भाषा प्रभावशाली रूपमा पठन पाठन गर्न सञ्चालक समिति गठन गरी स्वीकृतिकोलागि सम्बन्धित ठाउँमा माग राख्ने पनि पारीत गरेको छ।

### नेपाल लापाली संघ, क्षेत्र नं० २ युनिटको गठनः–

झापा क्षेत्र नं० २ का मगरहरूको एक भेला द्वारा सो क्षेत्रमा नेपाल लापाली संघको एक युनिट गठन भएको छ। भेला संयोजक लाल बहादुर मगर रहनु भएको सो युनिटमा सभापति, उपसभापति, सचिव सहसचिव तथा कोषाध्यक्षमा क्रमशः भिम बहादुर राना, मगर, खड्ग बहादुर समाल, मगर, नर बहादुर आले, मगर, मन बहादुर ग्याङमी, मगर, र प्रकाश साह मगर र अन्य २१ सदस्यहरू रहनु भएको छ।

### ल्होसार नयाँ वर्ष भव्यताका साथ सम्पन्न।

यही गत माघ २ गते काठमाण्डौं चाबहिल स्तुपमा नेपाल ह्योल्मो समाज सेवा संघको आयोजनामा ल्होसर (२११७ भेडा वर्ष) नयाँ वर्ष विभिन्न कार्यक्रमका साथ मनाईएको थियो। विभिन्न भाषाका गीतहरू समावेश भएको सो कार्यक्रममा विभिन्न जातीय संघ संस्थाहरूले भाग लिएका थिए।

### विचार गोष्ठी सम्पन्न :–

पौष २८, ०४७ का दिन नेपाल जन जातीय महासंघ, तदर्थ समितिको आयोजनामा ललितपुर शिंखमुलखेश्वर बौद्धपीठमा "नेपालका जनजातिहरूको धर्म तथा संस्कार" विषयक विचार गोष्ठी स्वास्थ्य मन्त्री माननीय डा० मथुरा प्रसाद श्रेष्ठको प्रमुख आतिथ्यता र ने० ज० महासंघका संयोजक नेपाल लापाली संघका महा सचिव श्री सुरेश आले मगरको सभापतित्वमा सम्पन्न भएको थियो। सो गोष्ठीका प्रमुख अतिथि स्वास्थ्य मन्त्री डा० मथुरा प्रसाद श्रेष्ठले किरातीहरूको धर्मशास्त्र मुन्धुम्मा ब्रह्माण्ड र पृथ्वी एवम् मानिसको सृष्टी बारे गरिएको व्याख्या आजका वैज्ञानिकहरूले गरेको व्याख्यासँग मिल्ने भएकोले अति नै रोचक र बुझ्न लायक भएको बताउँदै सबै जात-जाति, जनजातिले सचेतताको

---

## शुभ–कामना

स्वदेश तथा बिदेशमा रहनु हुने सम्पूर्ण नेपाली दाजु-भाई तथा दिदी बहिनीहरूमा किरात येले सम्वत ५०५१ शुरु भएको नव वर्षको उपलक्षमा हार्दिक शुभ-कामना।

केन्द्रीय काय समिति

**किरात याक्थुङ्ग चुम्लुङ्ग**

---

## समबदना

किरात याक्थुङ्ग चुम्लुङ्ग केन्द्रीय सांस्कृतिक उपसमितिका संयोजक श्री दिनेश सुब्बाको पुज्य पिता श्री सुबेदार मेजर रन ब. लिम्बूको ५७ वर्षको उमेरमा दार्जिलिङ्गमा असामयिक निधन भएकोमा वहाँको आत्माको चीर शान्तिकोलागि ईश्वरसँग प्रार्थना गर्दछौं साथै शोक संतप्त परिवार प्रति हार्दिक समबेदना प्रकट गर्दछौं।

**याक्थुङ्ग चुम्लुङ्ग परिवार**

---

## समबदना

किरात याक्थुङ्ग चुम्लुङ्ग केन्द्रीय कार्य समिति कार्यकारिणी सह सचिव श्री बाल कृष्ण मावोहांको पुज्य पिता श्री भक्तसेर मावोहांको ७५ वर्षको उमेरमा यही २०४७ मंसीर २५ गते काठमाण्डौमा असामयिक निधन भएकोमा वहाँको आत्माले शान्ति प्राप्त गरोस् भनी ईश्वरसँग प्रार्थना गर्दछौं साथै शोक संतप्त परिवार प्रति समवेदना प्रकट गर्दछौं।

**याक्थुङ्ग चुम्लुङ्ग परिवार**

---

स्व० चेम्जोङ्ग जयन्तीको उपलक्षमा बिशेष लेख—

# स्वर्गीय इमान सिं चेम्जोङको जीवनी

—रकम चेम्जोङ्ग

मानिसहरू जन्मन्छन्, मर्छन् । जन्मनु र मर्नु स्वभाविक प्राकृतिक नियम हो । तर कोही मरेर गए पनि सँधै बाँचिरहन्छन् । यसरी मरेर गए पनि नेपाली इतिहासमा सँधै बाँचिरहने व्यक्तिहरू मध्ये स्व० श्री इमान सिं चेमजोङ्ग पनि हुन् । उनले विभिन्न ऐतिहासिक कारणहरूले प्राय लुप्त भइसकेको प्राचीन नेपाल राष्ट्रभाषा मध्येको एक किराँती भाषा–लिपी र साहित्यको खोज अनुसन्धान तथा प्रचार-प्रसार गरेर लोप हुनबाट बचाए । आफ्नो सामाजिक संस्कार जातीय संस्कृति बिर्सिएर पराइको संस्कार र संस्कृति अपनाउन बाध्य भएका जातिहरूलाई आफ्नो संस्कार र संस्कृति चिनाइदिए । विश्व इतिहासमा रहेको जातीय जीवन पद्धतिको दिग्दर्शन गर्ने मौलिक धर्मलाई खोज-अन्वेषण गरेर शृङ्खलाबद्ध गरिदिए । नेपाली इतिहासमा हराइसकेको गौरवमय जातीय इतिहासलाई खोज-अनुसन्धान गरेर जग हालिदिए । यसरी सिंगो किरांत जातिको इतिहासमा बन्द भइसकेका सबै पत्रहरूको आफ्नो छोटो जीवन अवधिमा पनि उद्घाटन गरि दिएर नेपाली इतिहासमा एउटा अमर व्यक्तिको रूपमा स्थापित भएका छन् ।

स्व० श्री इमान सिं चेमजोङ्गको देनलाई मूल्याङ्कन गर्दा एउटा पक्षको वा विषयको आधारबाट मात्र हेर्नु गलत ठहरिनेछ, उनको मूल्याङ्कन अपूरो र अधूरो हुनेछ । उनको देन बहुपक्षीय मात्र होइन सर्व पक्षीय छ । किरांत धर्म, भाषा–लिपी, साहित्य, संस्कृति, इतिहास, समाजसुधार आदि क्षेत्रमा दिनुभएको योगदान त्यस विषय वस्तुमा योगदान गर्ने अन्य कुनै व्यक्तित्व सँग तुलना गर्न मिल्दैन, अतुलनीय छ । त्यसैले होला, उनको व्यक्तित्वलाई चिन्ने वर्ग चाहे इतिहासकार हुन् भाषाविद्, चाहे संस्कृतिका ज्ञाता हुन् या धार्मिक पण्डित हुन् सबै वर्ग उनको योगदानको प्रशंसा गरेर थाक्तैनन् र नतमस्तक हुन्छन् ।

बहुप्रतिभाका धनी किरांत जातिका सम्पूर्ण पक्षको ज्ञाता स्व० इमान सिं चेमजोङ्गको जन्म कालेम्पुङ्गको रिङ्गकिंगुङ्ग भन्ने रमणीय गाउँमा सन् १९०४ जनवरी १ का दिन भएको थियो । आमा दखापुहाङ्माको लालन-पालनमा हुर्केका बालक इमान सिंलाई बाबु मेघबर सिं चेमजोङ्गले गाउँकै प्राथमिक विद्यालयमा भर्ना गरिदिए । त्यो विद्यालयमा त्यतिखेर हिन्दी मात्र पढाई हुन्थ्यो । सन् १९११ मा इमान सिंलाई एउटा अंग्रेजी विद्यालयमा सारियो । एकदिन त्यो विद्यालयका एकजना शिक्षकले अध्यापनको सिलसिलामा "नेपालको पूर्वी भेगमा लिम्बू जातिहरू बस्छन् । यिनीहरू जंगली अवस्थाबाट भर्खरै विकसित हुँदै आउँदैछन् । केही केहीले पढ्न थालेका छन्" भने । यो सुनेर किशोर अवस्थाका इमान सिंले घर गएर बाबुलाई यो वृतान्त सुनाए । बाबु मेघबर सिंले "त्यसो होइन, लिम्बू जातिहरू हाङ जातिका हुन् तिनीहरूको आफ्नै राज्य थियो । उनीहरूको आफ्नै भाषा–लिपी र धर्म छ । तर अहिले ती सब कुराहरु त्यहाँको श्री ३ सरकारले मासिदिएको छ ।" भनि सम्झाए र एउटा हस्त लिखित पुस्तक दिदै भने "यो हाम्रो भाषा लिपीको लिखित पुस्तक हो ।" यही घटनाबाट प्रेरित भएर किशोर अवस्थाका इमान सिं चेमजोङ्गले आफ्नो जातिको इतिहास, धर्म संस्कृति, भाषा तथा लिपी सम्बन्धि केही गर्छु भन्ने अठोट मनभित्र दृढरुपमा लिए । उनले विद्यालयको पढाई संग संगै बाबुले दिएको हस्तलिखित पुस्तक पनि पढ्न, सिक्न थाले । सन् १९२५ जुलाई १६ का दिन इमान सिंका दाजु बुद्धिमान सिंको सहयोगमा किरांत लिपी र लिम्बू भाषा प्रचार-प्रसार गर्ने सूबेदार मेजर हर्क बल माबुहाङ, दोरोङ्गा धन बाज फेन्दुवा, मण्डल जीत बहादुर थेगिम, मण्डल हंस राज थेगिम, कुलहाङ चेमजोङ्ग र निर्मल सदस्य भएर कालेबुङ्गको डुंग्रा बस्तीको मैन सिं थेगिमको घरमा जम्मा भए । उनीहरूले युवा इमान सिंह चेमजोङ्गलाई उनीसँग भएको हस्तलिखित लिम्बू भाषाको पुस्तक पढ्न लगाए उनले पढेको देखेर भेला भएका सम्पूर्ण मानिसहरू ज्यादै खुसि भए । आफ्नो भाषा सिक्नु पर्छ र प्रचार–प्रसार गर्नु पर्छ भन्ने उद्देश्यले उनीहरूले एउटा चुम्लुङ्गको आयोजना गरे । त्यस चुम्लुङ्गलाई "याक्थुङ्गहाङ चुम्लुङ्ग" भन्ने नामाकरण गरे जुन अहिले पनि क्रियाशिल छ । यही चुम्लुङ्गबाट लिम्बू बस्तीका सबै क्षेत्रमा लिम्बु भाषा प्रचार-प्रसारको निम्ति अनुरोध पत्र समेत पठाए । डुंग्रा बस्तीका बुढा-पाका, युवा युवती र केटा-केटी सबैलाई लिम्बु भाषा पढाउन इमान सिं चेमजोङ्गले शुरु गरे । प्रतिभाशाली इमान सिं चेमजोङ्गले भाषा प्रचार कार्यमा जुट्नको साथ साथै आफ्नो विद्यालयको पढाई पनि अघि बढाउँदै गए । सन् १९२६ मा उनले म्याट्रिक उत्तीर्ण गरे । यतिले मात्र उनको ज्ञानको भोक मेटाउन सक्ने कुरै थिएन ।

त्यसले उच्च शिक्षा अध्ययनको लागि उनी कलकत्ताको सेन्टजेभिएर कलेजमा भर्ना भए । त्यहाँ उनले आई० ए० उत्तीर्ण गरेर त्यही बि० ए० को अध्ययन पनि आरम्भ गरे । कहिले काहीं मान्छेले इच्छाएको लक्ष्यमा पुग्न हिड्दै जाँदा बाध्यता र विवशताका कठोर पर्खालहरूले बाटो छेकिदिने गर्छन् । इच्छाएको लक्ष्यमा पुग्ने सपनाहरूलाई उल्टो पारेर बाटो पत्रिनु पर्छ । युवा इमान सिं चेमजोङलाई पनि त्यस्तै भयो । आफ्नो अध्ययनको धोको पूरा गर्न पाएनन् । उनीमाथि पितृशोकको बज्रपात भयो । बी०ए० पढ्दा पढ्दै आफ्ना सम्पूर्ण सपनाहरू कुम्लो कुट्रोमा बाँधेर घर फर्किनु पर्‍यो । त्यसपछि उनले आफ्नो अध्ययनलाई अगाडि बढाउन पाएनन् । सैद्धान्तिक विद्यार्थीबाट व्यवहारिक विद्यार्थीमा परिणत भए । तर उनीभित्रको किरांत भाषा, साहित्य र इतिहासको खोजी गर्ने उत्कृष्ट ईच्छालाई भने यो संकटले रोक्न सकेन । कहिले दार्जिलिङ कहिले पश्चिम सिक्किमका विद्यालयहरूमा शिक्षण काम गर्दै किरांत साहित्य र इतिहासको खोज गर्दै भाषा प्रचार-प्रसारमा निरन्तर लागीरहे । यसै अवधिमा लिम्बू भाषा प्रचार गरे बापत दरे टै भएर नेपालबाट सिक्किम निर्वासनमा बसेका बुढा लालसोर सेन्दाङसँग उनको भेट दाराम्देनमा भयो लालसोर सेन्दाङबाट उनले किरांत इतिहास सम्बन्धि प्रशस्त जानकारीहरू प्राप्त गरे । गाउँ गाउँ घुमेर पुराना हस्त लिखित सामग्रीहरू भेला गरेर अध्ययन गर्न थाले । सन् १९४८ मा पश्चिम सिक्किमको विद्यालयबाट मान्लेखको विद्यालयमा गए । यही साल उनले तुम याक्थुङ निवाफु साप्ला (किरांत प्राथमिक पाठ्यपुस्तक) लिथो गरेर निकाले । त्यहाँ पनि किरांत इतिहासको खोजी गर्दै भाषा प्रचार प्रसारमा लागीरहे । यतिञ्जेलसम्ममा किरांत इतिहास सम्बन्धि निकै सामग्रीहरू संकलन गरिसकेका थिए । त्यसैले यसलाई व्यवस्थित ढंगले लेख्ने काम थाले । सन् १९४८ मा उनले सिक्किमको सरकारी अफिसमा काम पाए । यही साल अर्थात् सन् १९४८ मा उनले "किरांत इतिहास"को प्रथम प्रकाशन गरे ।

इतिहासको खोजी अनुसन्धान तथा प्रचार प्रसार नेपाल गएर गर्ने विचार गरे । सन् १९५२मा सिक्किम छोडेर पूर्वी नेपालको लिम्बूवानमा आएर घुम्न थाले । सन् १९५३ मा सबै थुमका लिम्बूहरूले चुम्लुङ बसी 'लिम्बूवान सुधार संघ' गठन गरेर इमान सिंह चेमजोङलाई त्यसको अध्यक्ष बनाए । सोही वर्ष लिम्बूवानको रीतिथिति, किपट र अन्य मागहरूको जानकारी गराउन लिम्बूवानको प्रतिनिधि मण्डलको नेतृत्व गरेर इमानसिंह काठमाण्डौं गए ।

लिम्बूवान खम्बूवानका प्रत्येक गाउँ गाउँमा डुलेर भाषा, इतिहास, धर्म र संस्कृतिको खोजी गरे । लिम्बूवानमा लगभग १० वर्षसम्म ऐतिहासिक सामग्रीको खोज र भाषा लिपीको प्रचार प्रसारमा समय बिताए । परिवार जनसँग समेत अलग्गिएर दिनरात किरांत इतिहास, धर्म, संस्कृति तथा साहित्यको खोजीमा निरन्तर लागिरहे । भाषा लिपीको प्रचार प्रसारमा जुटीरहे । लिम्बूवानमा नै रहँदा सन् १९५५ मा आर.के स्प्रीग्ले (Indian office lib ary, London) इन्डियन अफिस लाइब्रेरी, लण्डन बाट ल्याएको हस्त लिखित किरांत लिपी उहाँलि पढेर सुनाए । यस सामग्रीले उनको अनुसन्धान क्षेत्रलाई फराकिलो बनाइदियो । यही साल उनले 'किरांत साहित्यको इतिहास' प्रकाशित गरे । केही स्वार्थी राजनीतिज्ञहरूले राजनीतिबाट माथि पुगेर इतिहासको खोजी गर्न सजिलो हुन्छ भन्ने सल्लाह दिए । त्यो बहकावमा फिदालिङ भावका इमानसिंह पनि परे र नेपालको पहिलो आम निर्वाचनमा आफ्नो पुरानो थलो फाक्तेप, पाँचथरबाट उम्मेदवारको रूपमा खडा भए । इमान सिंह चेमजोङ सरल स्वभावका थिए, उनीसँग झूटो बोल्ने बानी थिएन । हारे । त्यसपछि केही वर्षसम्म लिम्बूवानमा खोजी अनुसन्धान गर्दै लिम्बूवान र खम्बूवानका प्रत्येक एतिहासिक स्थलहरूको भ्रमण गर्दै सामग्रीहरू जम्मा गर्ने र अध्ययन गर्ने काम त गरे तर त्यसबेला व्यवस्थित ढंगले पुस्तक आकार दिने र प्रकाशन गर्ने काम लिम्बूवानमा बसेर सम्भव देखेनन् त्यसैले काठमाण्डौंमा आएर बस्न थाले । काठमाण्डौमा बसेर भाषा, संस्कृति इतिहास, धर्म र अन्य साहित्यिक रचनाहरू लेखेर प्रकाशन गर्न थाले । यतिकैमा त्रि० वि० वि० मा किरांत भाषा तथा संस्कृति विशेषज्ञको रूपमा सेवा गर्न थाले । उनका कृतिहरूको अध्ययन गर्दा वास्तवमा व्यवस्थित रूपले लेखन कार्य प्रारम्भ भएको यही अवधिमा उनका कृतिहरू धमाधम प्रकाशित हुन थाले । उनका प्रकाशित कृतिहरू निम्नानुसार भएको पाईएको छ साथै नाम र प्रकाशन मिति क्रमशः दिइएको छः–

१. तुम याक्थुङ निवाफु साप्ला (किरांत प्राथमिक पाठ्यपुस्तक भाग १ –१९४२ लिथो प्रिण्टेड
२. किरांत इतिहास – सन् १९४८
३. किरांत साहित्यको ईतिहास –सन् १९५५
४. किरांत दन्त्य कथा – सन् १९६१
५. किरांत मुन्धुम – सन् १९६१
६. लिम्बू-नेपाली-अंग्रेजी शब्दकोष सन् – १९६२
७. किरांत मुन्धुम् खाहुन – सन् १९६५
८. History and culture of Kirant peop es part I aud II – सन् १९६६
९. किरांत दर्शनको सारांश – सन् १९६९
१०. साम्ला नेपाली अंग्रेजी शब्दकोष – सन् १९७६

११. विजयपुरको इतिहास – सन् १९७४
१२. यात्थुङ्ग पान्हुन (लिम्बू व्याकरण) –
१३. बलिहाङ्ग नहनाम – सन् १९८५
१४. वान्नावा नेपाली अंग्रेजी शब्दकोष –
१५. किरात प्राथमिक पाठ्यपुस्तक भाग २, ३ र ४

अप्रकाशित केही पुस्तक र साहित्यिक कृतिहरू।

यी बाहेक उनले केही अरु कृतिहरू लेखेका छन् त्यो प्रकाशको निम्ति भएको छ। उनले ठूलो त्याग र बलिदान गरेर धेरै बहुमूल्य ऐतिहासिक सामग्रीहरू संकलन गरेका छन्। सो सामग्रीहरू अहिले उनका परिवारसँग सुरक्षित छन्। किरात इतिहासको खोज अनुसन्धान गर्ने व्यक्तिको निम्ति ती सामग्रीहरू ज्यादै महत्वपूर्ण कुराहरू हुन्। वास्तवमा नेपाली ईतिहासको अंग नै किरातकालिन इतिहास हो। किरातकालीन इतिहासको रूपरेखा स्पष्ट नभइ सिंगो नेपाली इतिहास सधैं अधुरो र अस्पष्ट हुनजान्छ इमानसिंह चेम्जोङ्गले किरात इतिहासको जग बसालेका छन्। यो एउटा ज्यादै ठूलो योगदान हो जुन हामी नेपालीहरूले कहिल्यै बिर्सनु हुन्न। नेपाली इतिहासले बिर्सने छैन। उनले वि० वि० वि० मा पनि लामो समय सम्म किरात भाषा तथा संस्कृतिको विशेषज्ञको रुपमा सेवा गरे र सन १९७६ मा सेवाबाट अवकाश लिए। सोही साल उनको सार्वजनिक अभिनन्दन पनि गरिएको थियो। यसपछि उनी दार्जिलिङ्ग गएर बस्न थाले। सोही साल अर्थात सन १९७६ सालमा २ छोरा र ३ छोरीका पिता श्री इमानसिंह चेम्जोङ्गले आफ्नी श्रीमती, सन्तान र यस लोकका सबै छोडेर परलोक भए। किरात इतिहासका इतिहासकार, किरात भाषा लिपीका विशेषज्ञ, किरात धर्म तथा संस्कृतिका ज्ञाता र किरात समाज सुधारक स्व० श्री इमानसिंह चेम्जोङ्गको निधनले किराती इतिहासमा मात्र होइन सिङ्गो नेपाली इतिहासमा अपूरणीय क्षति भएको छ। किरात समुदायका एक उज्वल तारा स्व० इमानसिंह चेम्जोङ्ग यो लोकमा अहिले छैनन् तर उनले ठूलो त्याग तपस्या गरेर सर्जेका कृतिहरू छन्, तिनै कृतिहरूसँग सँगै उनी सँधै नेपाली समाजमा बाँचिरहने छन्।

---

## मावयुं शास्त्रको व्याख्या

### ( सृष्टी मुन्धुम )

लेखक :— कृष्ण सावंति
माङ्खक, भदौरे, पाचथर।

ॐ नावा चईत हाप्ते सम्मीये साप्ते होप्ते।
(ॐ विश्वमा जनथल केही थिएन)
संगुपवरक हाप्ते मिर्क ि फुगा होप्ते।
(पृथ्वी जल फूल पानी थिएन)
ईक्सा खाम्बेक् होप्ते मेधु मेराक् होप्ते।
(पृथ्वी, अग्नी ज्वाला पनि थिएन)
माधुंनारक् होप्ते नाधुं नाम्लाफ् होप्ते।
(चन्द्र सूर्य पनि थिएनन्)
मुन्धाँ खेसे मुगी सेरी होप्ते।
(तारागण, बिजुली बज्र पनि थिएन)
सिछिरी सिवाङ् बबेरे बेवां होप्ते।
( सहस्त्र देव नाम केही पनि थिएन )
साबागेन यक योक्मा होप्ते।
( जलथल डाँडाकाँडा पनि थिएन )
हाङसाम मांगाम नारा केनारा होप्तेल्ले।
( ईश्वरको वा रेखै नहुँदा )
ह्रीं साम मां सामनारा केनारा नेमा मां।
यो तरक पप्मी यो तां सांपप्मी थो।
( माथि आकाश समुद्रको नाउँमा )
तरक मु होप्ते तां सां मु होप्ते।
( आकाश जल थल थिएन )
यो ईक्सा नेमियो खाम्वेक नेमियो।
( तल पृथ्वी रहने ठाउँमा )
ईक्साम् होप्ते खाम्वेक मु होप्ते।
( पृथ्वीको आकार पनि थिएन )
मु सुने सुंने। खेसुंने सुने।

सायालि पगेन महङनि नेवे।
( ब्रह्माण्ड नीरन्जन नीराकार थियो )
थोसोधुं पप्मी थोलिप्मु पप्मी यो
( माथि तिनो आकार देखिने ठाउँमा )
खेहङ निगम् हङमा नेसेवा।
( आकाश शुन्य पुमाङ् जस्तो थियो )
यो ईक्साना खाम्वेक नेमीयो।
( तल पृथ्वी रहने ठाउँमा )
मुदावलुङ् मु ताक्फा नेसेवा।
( पछि पृथ्वी जन्मे प्रचण्ड शक्ति रहन गयो )
साप्मा सत्तेरे कुमां मत्तेरे।
( अकक्ष सन्ये शक्तिले )
सेन्दी पेमाग तुम्मा मेलोसे थाङ्।
( यो पञ्च तत्वहरू एक ठाउँ (थिवका) जम्मा भए)
(पञ्च तत्वहरू :— थोमुक हिक्मेथु = आकाश तत्व, कोहीकमेथु = अग्नीतत्व, चीं औं हिक्मेथु = वायु तत्व, लि लि हिक्मेथू = जल तत्व, ने ने हिक्मेथू = पृथ्वी तत्व)
खेंनासा नेन्जुम मेगांसीं नीवामेवांसीं।
( ती पञ्चतत्वहरू एक अण्डा बनिए )
नेजुमइरेल्ले निवाईरिल्ले।
( सो अण्डा घुम्दा गतिले फुट्दा )
लाप्मा मेलन्दे कुमां मेलन्दे।
( त्यसबाट सहस्रदेव गणहरू प्रकट भए )
खआसा मुलोक लुंमालो खालोलु मांहारे
ईक्सा खाम्बेक मेनेसु मेजोग्।
( यीनै सहस्र देवगणहरूले संसार सृष्टी रचना गरे )

# किरांत याक्थुङ् चुम्लुङ्को विशेष लख

लाजे:सा याक्थुङ्बा (भगत सुब्बा)
फेदाप , लिम्बुवान

## आनी साम

आंफेक नु फूङ्लाबङ्ग केयुङ्वासे
थिक नेच्छी आवान् हा: बप्लाम्म्रो !
चुङ्जिरी येच्छासा याक्थुङ्वासे
आल्ल ग खासिङ्ग नेताम्म्रो !!
येयाङ्गसा अभदाङ्बा मावोक्स
सिक्कुम्दीङ्ग निङ्वा तेसाम्म्रो !
चुम्लुङ्ग लुम्म्रो ता: थक्नु तेङ्से
आल्ल कन पानंनि नेस्सुम्लो !!

आदाङ्बासे ,

आल्ल सेवा ममा लामपो ! हेना ममा पान ओ ! अक्बे थिक्नेङ्ग सिकुम्धीङ्ग निङ्वा तेसुछिल्ले ! आनिङ्बारे खोप्तुबा , ईत्बा पान हा: साप्मे पोक्से !

याक्थुङ्ग लाजे:बा याक्थुङ् सा पोखाङ्ग खम्बेल्ले चोगुल्ले , निस्साम्माङ्गफुमेल्ले , मुरा मेताङ्बा याम्बक हा:ग चोक्मे पोक्से ! कोप्मे पोक्से ! पाप्मे पोक्से , नाकचा तेम्यां म याम्मु आल्ल साप्मे पोक्से !

थेयाङ् फेल्ले , आनि: म थिबोङ्ग याक्थुङ्ग सासी ! यम्बा चुक्पा माहोप ! फक्वङ् निङ्वा आदङ्ङिल्ले मुन्दीक यरिक आबोक ! अम्म्दाङ्बा इङ्खङ्ङिन् हाम्बा फा: आङ्ग , ऐन नेक्चा साप्ला चङ्धो , निहीकाप नाक्वान हुनु-दनु , थिक्नेच्छी पान हा: तेक्क फ:मा सोक्तुङ ल प:त्लारो याक्थुङ्ग हाङ्से !

कर एन सापसक ओ , लप्छा पानथिक्लक्, ता:थक्फू:आ निङ्वा हेसुङ्ल प:त्ले ! येन् आवान निक्छा , मुन्धुम हुमा ! साम्माङ्ग खमा ! मुक्म तेम्मा ! चो:त्लुङ्ग मेम्मा ! मुजोक्लुङ्ग लाम थक्क सेम्मा ! तुम्याङ्हाङ् , सम्बा , फेदाङ्मारे , वयामेन ईङ्दङ खेम्मा , " ई " सेम्मा ! अम्दाङ्बा केदङ्बा येबमिन आतिङीन् ब फा:आङ् साम्मा ते:माल्ले , याक्थुङ्ग लाजे:बा केरेक याक्थुङ्ग (लिम्बू) हा:रे मेम्बोक्ए मेम्बोङ्ना माङ्गेत्रा थिक निसुङ् ! याम्मु साक्थुङ् ते:रुङिल्ले ! आनि माङ्गेत्रा थिमथिन ब हिमयाङ् नु मेम्बामसेन या:प्मी एक कम्बाङ् केमेप्पा मेल्लोदाङ्बा निसुङाङ्ग , एन माङ्गेत्रारे पानपो चि: तुरिक ईच्छिङाछिल्ले , कन माङ्गेत्रा ओ म , याक्थुङ्ग लाजेबा सेसे यासाङ् साङ्गबा " हिल्ली " (मोती) थिक्नी खोसुङ्ग !

येन हिल्लीन याक्थुङ्ग लाजेबा केरेक याक्थुङ्गबारे कुसिङ् निप्मा थोङ् ! माङ्गेत्राल्ले असेन् आदाक्तेबा लाम हा: कुसिङ् निप्मा कोत्तुन् मा:रुम ! कुबोरा देन हा: अक्बे फास्सुम्माङ् थिक्नङ् अमतुम ते:रुम ! आङ्मा कुसिङ नित्बा थाकनु:यो साप्तुङाङ् पत् ! कन सापसकपो निङ्वा मेन्दाम्मारे , सक ईङ्घङ्ओ नु चुम्लुङ्ङिन् ता:थक्तुम !

---

### माङ्गेत्रा ( रक्षा पूजा )

१. माङ्गेत्रा लाम मुजोक्लुङ लेमुन्धुम हा: !
२. माङ्गेत्रारे थिबोङ याक्थुङ्ले थिबोङ यक्क (गण) सेन्दु !
३. माङ्गेत्रारे लाजे:बा हाङथिम, चो:लुङ् सेन्दु !
४. तुत्तुमम्याहाङ चो:लुङ् सेन्दु !
५. सि या: मा: या " ई " सेन्दु !
६. माङ्गेत्रारे कुम्फु कुम्मा: चिमुङ् फुक्सुसियाङ चुम्लुङ वान्दु !

अखेबाङ्बा कुबोरा हा आल्लसाङ् यल्लिक मेवा कर साङ् आल्लो अम्मरक साप्मा निङ्वा पोगुङ् ! कुबेय पाशिङ् हेन् फेल्ले , आनि केरेक याक्थुङ हा: रे मच्छा येम रो माङ्गेत्रा चोगुम ! (मन खोजेको कुरो के भने देखिन १७ थुम १० लिम्बुवान का सब लिम्बुहरूले आफ्नो माङ्गेत्रा (रक्षा पूजा) लाई तिथिमिति तोकेर लिम्बुवान राज्यभरी एकै समयशुभ घडीमा मनाउनु पर्छ भन्ने मेरो आफ्नो विचार लाई अगाडी सारेको हुँ ! )

ङातिङ येम ओनु हेक्तुम कङ पानंनिन चुम्लुङ ओ नेम्तुम ! हेक्वाङ् ता:थक्तुम ! केरेकले निङ्वा तामदाम चोगुम्माङ येम निङिन सेगुम ! हे:र पोङ्ङिल्ले , आनि फत्तङ तङ् ! निङ्वा तङ् ! मुन्धुम माङ् तङ् ! ता:जेङाङ् तङ् !

अक्बे पोङ्जेक्ले था:रिक्तुना नुबा पोङ्बा ! अक्बे पोक्सेनि फग र तुम्याङ्हाङरे चो:लुङीन् तित् ! ओङ्सी , साम्बा , श्रीङ येबा , येबा , फेजिक्हुम फेदाङ्मारे याङ् खुम्मी मिङ्नान ईङ् ! याम्मु याक्थुङ्लाजेबा याक्थुङ्सारे थक मुक्कुमथिन्नाङ् तगो लाम लो ! कन पानंनिन सेक्चा ये सेक्बा रो आदाङ्बा-आदाङ मासे !

साजेलि सङ्म्याङ चामरे सा
याक्थुङ्ले मिङ्लान फे:लारे ई !
आल्ल ग सिक्कुम तेसुम्लो
आल्ल ग निङ्बा तेसुम्लो !!
ईलादेन चुम्लुङ् नेसुम्माङ्
साम्माङ्ङिन तुरिक खसुम्लो !
केरेक्ले सेवा चोक्नु पोक्नु
अक्से नि हेना मयूङ्लो !!